# शाक्यहरूको विकास र शाक्यहरूको पतन

## शाक्यहरु को हुन् ?



## कीर्तिपुण्य महाविहार

लगन बहाल, काठमाडौं, वडा नं. २१

# शाक्यहरूको विकास र शाक्यहरूको पतन

## शाक्यहरू को हुन् ?



**हर्षमुनि शाक्य**

लगन टोल, काठमाडौं ।

# शाक्यहरुको विकास र शाक्यहरुको पतन

## शाक्यहरु को हुन् ?

- ले. हर्षमुनि शाक्य
लगन टोल, काठमाडौं

भारतको पौराणिक वंशावलीमा भगवान रामचन्द्रको २४ औं वंशजलाई शाक्यहरुको नाउँ उल्लेख गरेका छन् ।

महावंशमा शाक्यहरुलाई ओक्काक वा इछ्वाकु वंशको नाम जोडिएको छ ।

विष्णु पुराणमा पनि यही कुरा लेखेको छ ।

महावस्तुमा शाक्यहरुलाई आदित्यबन्धु भनेको छ । आदित्य बन्धु भनेको शाक्यहरु सूर्यवंशका हुन् भनेको हो । महावस्तुले शाक्यमुनि बुद्धलाई इछ्वाकुवंश भनेर पनि लेखेको छ ।

**किरात वंशावलीको भनाई:**

किरात वंशावलीका प्रतिलिपिकार "प्रमेबहादुर माब्बो हाङको" भनाई अनुसार कलिगत सम्बत् २२४८ किरात वंशका राजा "शंङ हाङको" शासनकालमा लेखेको किरात वंशावलीमा मध्य एसियाबाट आएका शकहरु नै शाक्यहरु हुन भनेका छन् ।

**डा. प्रपन्नाचार्यको भनाई:**

डा. प्रपन्नाचार्यले लेखेको "प्राचीन किरात इतिहासको" भनाई अनुसार मध्य एसियाबाट हिमाल नाघी आएका शकहरुले भारतलाई आक्रमण गर्ने कुरा भारतको इतिहासमा लेखेका छन् । साकेतनगर (हाल अयोध्या) छोडेर कपिलवस्तुमा बसाई सरेपछि यिनीहरुलाई शाक्य भनी नामाकरण भयो भनेका छन ।

**चिनियाँहरुको भनाई**

चुङ-इन-रन-मिङ-यु-ई-श-ब्हा (चीनभारत मैत्री संक्षिप्त इतिहास) बाट

लेखक: प्रो. चिन खमु

लोक गणराज्य चीनमा मुद्रित सन् १९८४ मा प्रकाशन भएको उक्त पुस्तकको भनाई अनुसार इस्वीपूर्व ६०० देखि इस्वी प्रथमसम्म विशाल क्षेत्र मध्यएसियामा स्काई थिएनहरुले शासन गरिराखेका थिए। भारतमा यिनीहरुले नै कुषाण राजवंश स्थापना गरेका हुन्।

यिनीहरुलाई शक भनिन्छ, कपिलवस्तुका शाक्यहरु पनि शाकेतनगर (अयोध्या) बाट कपिलवस्तु पुगिसकेपछि शाक्य भनी नामाकरण भएका हुन्। शकहरुनै शाक्यहरु हुन् भन्ने प्रो. चीन-खमूको भनाई हो। शाक्यहरुको पुर्खामध्ये एसियाबाट आएका इण्डो स्काईथिएनहरु नै हो भन्ने प्रो. चीन-खमूको भनाई हो।

**संक्षिप्त विश्व इतिहास प्रथम भागमा उल्लेखित:**
पृष्ठ नं. ८२ हिन्दीमा अनुवाद गरी प्रगति प्रकाशनले सन् १९८० मा सोभियत संघमा छापिएको,
संपादन: "प्रो. अ.ज. मानफ्रेद" प्रगति प्रकाशन मास्को
अनुवादक: "नरेश बेदी" (भारतिय)

लेखकहरु: स्काज्किन, अ.अ. गुवेर, डि.एम.सी. (इतिहास), म.अ.अ. अल्पेरोचिव, ल.नं. कुताकोव, अ.ज. मानफ्रेद, सल.उत्वेको, अ.ब. फदेयत, पि.एच.डी. (इतिहास) द.व. देओपिक

**पाँचौ शताब्दीको ग्रिक इतिहासकार हिरोदाइटको परिचय**

एसिया - ए.कोचकमा बस्ने हालिकार्नासस नगरको निवासी हेरोदाइट (हिरादेट) लाई विश्व इतिहासको जनक भनेर विश्वले मानिआएको छ। ग्रिक इतिहासकार हिरोदटको भनाई अनुसार शाक्यहरुको पूर्खामध्ये एसियाको सीथिया (शकदेश) का स्काई थिएनहरु हुन्। इ.पु. छैठौं शताब्दीमा मध्यएसियाबाट भारत गएका हुन्।

**बुद्धकालिन जनपदहरु र राज्यहरु**

१) कोशल अधिराज्य

२) मगध अधिराज्य

३) शाक्य गणराज्य कपिलवस्तु

४) कोलिय गणराज्य देवदह रामग्राम

५) पावा मल्लहरुको गणराज्य

६) कुसिनगर मल्लहरुको गणराज्य

७) लिच्छवि गणराज्य वैशालि

८) विदेह (मिथिला) राज्य

९) काशि

१०) चेदी

११) बत्स

१२) सुरसेन

१३) मत्स्य

१४) कुरु

१५) गान्धार

१६) कम्बोज

१७) अवन्ति

१८) पाञ्चाल

**बुद्धकालिन समयका महानगरहरु**

१) चम्पा

२) राजगृह

३) श्रावस्ती

४) कौशाम्बी

५) साकेत (अयोध्या)

६) बारानसी

७) वैशाली

८) कुशीनगर

९) कपिलवस्तु

१०) देवदह

११) उज्जैन

## चिनिया इतिहासमा सर्वप्रथम कपिलवस्तुको वर्णन

चिनिया ग्रन्थ (सानकोच्च वैल्याउ सिच्वाङ) को ३० औं ठेलीमा पश्चिम हान साम्राज्यका सम्रात आइतिको शासनकालमा प्रारम्भिक वर्ष इ.पु. प्रथम शताब्दीमा इम्पेरल आकदमिका प्रमुख चिलुङ र गन्धार (अफगानिस्थान) बाट आएका राजदुत यिछुनको वार्ता ।

## राजदुत यिछुनले बताइरहेको कपिलवस्तुका नगरहरु

१) चातुम

२) खोमदुस्स

३) सामगाम

४) दिपबत्थु

५) सक्कर

६) नगरक

७) मेदलुम्प

८) शीलावती

९) उँजुम्प

**कलाकौशलमा कपिलवस्तुको विकास**

१) कपिलवस्तुमा खोमदुस्स भन्ने नाउ गरेको नगर मा क्षैम (सनपाट) ले बनाएको कपडा रेशम जस्तो छ ।

२) कपिलवस्तुमा रोप्ने धान चामल ब्रीहि, तंदुल, धानको उल्लेख गरेका छन् ।
महासाली चामल सबभन्दा राम्रो मानिन्छ ।

३) सिंह, ब्याघ्र, मृग, चितुवा, बिरालो, लाटोकोसेरो इत्यादि जन्तुको छालाबाट विभिन्न छाँतको जुत्ता बनाउँथ्यो ।

४) दक्ष स्वर्णकार र मणिकारहरुले सुन, चाँदी, हिरा, मोति जन्य बहुमुल्य जवाहरातको अलंकार

गहनाहरु बनाएर आभुषण प्रिय नागरिकहरुको सौकलाई पूर्ति गरी दिन्छ । तथापि स्वर्णकारहरु कपिलवस्तुमा धेरै छन् भनिन्छ । १८ ओटा जनपदहरुमा यिनीहरुको नाउँ प्रख्यात छ । घर बनाउँदा खेरी घरको बाहिर भित्तामा असल रंगले विभिन्न बुट्टा लेखिन्छ । यिनीहरुको घर बनाउने विधि धेरै उच्चस्तरका छन् । यिनीहरुले घर बनाउँदा खेरी भौ प्वाः राख्ने चलन छ ।

**शाक्य गणराज्य कपिलवस्तुको राज्य व्यवस्था**

२० वर्ष पुरा भएका शाक्य युवाहरु शाक्य संघ (संथागार) मा अनिवार्य सदस्य हुनुपर्दथ्यो । कपिलवस्तुमा संथागार तीन तहका थिए । जस्तै

१) गाउँ

२) जिल्ला

३) केन्द्रीय

केन्द्रीय - गाउँ, जिल्ला र केन्द्रीय तहगत रुपमा कानून लागू हुन्थ्यो ।

संथागारमा सबै सदस्यहरुका काम कर्तव्य यस प्रकार थिए ।

१) तन, मन, धन दिएर शाक्यहरुको स्वार्थलाई रक्षा गर्ने ।

२) संथागारले बोलाउने सभामा उपस्थित हुनु पर्ने ।

३) कुनै पनि शाक्यहरुको दोष अथवा गल्तीमा पश्चाताप नगरिकन नडराई खुलस्त रुपले भनिदिनु पर्ने ।

४) आफूलाई कसैले दोषारोपन गर्‍यो भने नरिसाइकन दोष स्वीकार्नु पर्ने ।

**संस्थागारबाट वंचित हुने चार ओटा कुराहरुः**

क) व्यक्तिलाई दोष दिएमा

ख) कसैको हत्या गरेमा

ग) चोरी गरेमा

घ) झुठा साक्षी बसेमा

संथागारको कुनै पनि सामुहिक निर्णयलाई सबै सदस्यले मान्नु पर्ने हुन्थ्यो ।

यदि नमानेमा तल दिएका दुई मध्ये एउटा कडा सजाय दिने प्रावधान थियो ।

मृत्युदण्ड अथवा देश निकाला

# मध्य एसियाको तुखार राज्य (वर्तमान शिच्याङ) मा बस्ने शाक्यहरुको विकास र पतन

कोशलका राजा विड्डूधवले कपिलवस्तुमा हमला गर्न सेना पठाएको थियो, त्यसबेलामा ४ जवान शाक्यहरु खेतमा काम गरिरहेको थियो । विड्डूधवले कपिलवस्तुमा हमला गर्न पठाएको सेनाहरु देख्नासाथ ४ जना शाक्यहरुले विड्डूधवको सेनाहरुसँग प्रतिरोध गऱ्यो । पछि सत्रु सेनाहरु भाग्यो र केही सेनाहरु मऱ्यो पनि । त्यसपछि ४ जना शाक्यहरु कपिलवस्तु नगरमा फर्कियो । ४ जना शाक्यहरुलाई मान्नु पर्नेमा तिनीहरुलाई त्यसो भएन उल्टो चक्रवर्ति राजा हुने र धर्मराजको सन्तानहरुले अरुलाई मारेको कसरी सहन सक्ला भनेर आरोप लगाई यी ४ जवान शाक्यहरुलाई कर्मबाट र वंशको नामबाट कलंक लगायो भनेर आरोप लगाई तिनीहरुलाई वंशबाट निष्कासित गऱ्यो ।

यी ४ जना शाक्यहरु मध्ये एक जना गन्धारमा पुग्यो । त्यहाँको नै राजा भयो ।

एक जना उद्यान (काश्मिर) मा पुगेर उ पनि राजा नै भयो ।

शाँमि राज्यमा पुगेका शाक्य पनि राजा नै भयो ।

एक जना शाक्य शम्भक भन्ने नाउँ गरेको मध्य एसियाको तुखार राज्य (वर्तमान शिच्याङ) मा पुगेर राजा नै भयो ।

कपिलवस्तुबाट निकालिएका शाक्य संम्भकले इ.पु. ५०० देखि तुखार (शिङच्याङ) मा शाक्यहरुले शासन चलाएर बसेका थिए । सन् ३८२ मा चीनको शिआन राज्यको राजा फुच्यनले जनरल लिक्वानलाई बोलाएर तुखार राज्यमा हमला गर्न जान आदेश दिए । दुई वर्षसम्म घमासान युद्ध चल्यो । सन् ३८४ मा जनरल लिक्वानले विजय पाईसकेपछि जनरल लिक्वान शिआन राज्यमा फर्केनन् । फर्कनुको सट्टा आफै एक स्वतन्त्र राज्य घोषित गरी तुखार राज्यमा आफैं राजा भए । शाक्य वंशीय राजा पोच्वेनको सैनिक कमाण्डरले आत्मसमपर्ण गरिसकेपछि शाक्यहरुको तुखार (शिच्याङ) राज्यमा इतिहास मात्र बाँकी रह्यो ।

## तुखार (वर्तमान शिच्याङ) राज्यमा बुद्धधर्म

तुखार राज्यको शाक्यवंशिय राजा विजय सम्भकको पालामा (इ.पु. २२१) मा सर्वप्रथम काश्मिरको भिक्षु वैरोचनले बुद्धधर्म भित्र्याएको थियो । राज्यले उनलाई श्रामविहार बनाई दिएको थियो । इसाको तेस्रो सदिमा तुखार राज्यमा बुद्धधर्मको एउटा ठूलो केन्द्र बनेको थियो । जहाँ सयौं विहारहरु छन् । सन् ३८३ इस्वीका शाक्यवंशिय राजा पोच्वेन भन्ने निकै श्रद्धावान बौद्ध भयो । यो समयमा युद्ध भइरहेको थियो । तुखार राज्यमा हरेक वर्ष १४ दिनसम्म बुद्धमूर्तिको धुमधाम जात्रा हुने गर्थ्यो । त्यसबेला राजाले पनि आफ्नो मुकुट खोलि नाङ्गो खुट्टाले बुद्धपूजा गर्नु पर्थ्यो ।

त्यतिबेला "उपि" भन्ने ठाउँमा चार हजार थेरवादी भिक्षुहरु थिए । हुएनसाङले आफ्नो आँखाले देख्नु भएका एक सय विहारहरुमा पाँच हजार सर्वास्तिवादी "हीनयानी" भिक्षुहरु देखेको थियो ।

## शिङ च्याङमा बैद्ध गुफा

शिङच्याङको पाएछन् काउन्टीको किजिलबस्तीबाट ७ किलोमिटर दक्षिण पूर्व टाढा भएको

किजिल गुफालाइ हजार गुफा भनिन्छ । यहाँ २३६ ओटा गुफा छ । १४ गुफामा बुद्धजीवनीका चित्र छन् । १७ ओटा गुफाको सिलिङमा बुद्धकै ३८ ओटा जीवन कथा छ । कुचा काउन्टीमा ३० किलोमिटर दक्षिण पश्चिम वैइकान नदीको किनारामा ६ ओटा थुलो गुफा छ । अहिले पनि यहा ७२ ओटा गुफा छन् । गुफाको भित्तामा चित्र हेर्न पाइन्छ । उक्त शताब्दीदेखि १४ औं शताब्दीसम्मको चित्रकला धेरै विग्रिसकेका छन् । बुद्धको मूर्ति भने त्यति बिग्रेको छैन ।

श्रोत : चीन भ्रमणबाट हेरेर आएको गणबहालमा युवा बौद्ध समूहले आयोजना गरेको कार्यक्रममा सुदर्शन महास्थविरले बोल्नु भएको टिप्पणी ।

चिर्न।या ग्रन्थ ता-था-सि-यु-ची
लेखक : हुएनसाङ

**तिब्बतको विकाशमा शाक्यहरुको देन**

तिब्बतको राजा 'थिसोङ दैचनको' महारानी यसेछोग्याल र छोग्यालको शिष्य नाम्खाई निम्पोले नवौं शताब्दीमा यसे छोग्यालको जीवनी लुकाएर राखिएको थियो । त्यस निधिलाई सत्रौं शताब्दीमा ताकसाम नुदेन दोर्ज्यले फेला पारेका थिए । पछि वहाँले प्रकाश गरेको यसे छोग्यालको जीवनीमा वर्णन गरे अनुसार धेरै समय पहिले तिब्बतमा बोन धर्मको विस्तार भएको बेला कपिलवस्तुमा शाक्यवंशिय सतयुद्धका छोरा ञाठिच्याम्पो लाई इ.पुं. ४०० मा तिब्बतको राजगद्दीमाा राखेको थियो । तिब्बतको राजवंशमा प्रथम राजा अठिच्याम्पो भनी शुभनामाकरण पनि गरियो ।

त्यसको पाँचौं वंशमा ल्हाथ्वञङच्याङ राजा भए र तिब्बतमा अन्तिम सन् २३३ मा बुद्धको पवित्र उपदेश गुणकारण्डब्युह सुत्र र सुनको एउटा चैत्य पनि खोटानमाट आई दुई जना भिक्षुले तिब्बतमा भित्र्यायो । त्यो ग्रन्थलाई पवित्र रुपमा आदरका साथ राखेका थिए । पछि नेपालका अनुवादकहरुले अनुवाद गरेपछि बुद्ध धर्म तिब्बतमा फैलियो । तिब्बतमा अन्तिम शाक्यवंशिय राजा

ल्हाथवडेन च्याङ नै भए । तिब्बतीहरुको भनाई अनुसार सन्-चन-गम्पो पनि शाक्यवंश नै हो भनिन्छ ।

## श्रीलंकामा शाक्यहरुको वैवाहिक सम्वन्ध

श्रीलंकाकै महावंश अनुसार राजा शुद्धोदनका भाई एवं भगवान बुद्धका काका अमृतोदनका छोरा पाण्डुशाक्य कपिलवस्तुको पतन हुनुभन्दा अगाडि नै आफ्ना केही अनुयायीहरुका साथ गंगापारी बसाई सरेका थिए । त्यहाँ उनले एउटा नयाँ शहर बसालेर राज्य गरे । समए वित्दै गएपछि उनका सात छोरा र एक छोरी भए । छोरी चाहिँ सबभन्दा कान्छी सन्तान थिइन् र तिनको नाउँ भद्रकात्यायनी राखिएको थियो । तिनी असाध्यै राम्री थिइन् र तिनको वर्ण सुनौलो थियो । तिनको विवाह इ.पु. ४४४ देखि ४२४ सम्म राज्य गर्ने श्रीलंकाका दोस्रो राजा पाण्डूवासुदेव सित भएको थियो । पछि भद्रकात्यायनीका ६ जना दाज्यूहरु पनि आफ्ना आमा बाबुको अनुमति लिएर श्रीलंकामा गए तथा त्यही बसोवास गरे । श्रीलंकामा उनीहरुले स्थापना गरेर वसोवास गरेका गाउँहरु उनीहरुकै

नाउँबाट नामाकरण गरियो । जस्तै रामको नामबाट रामगोण, उरुग्वेलबाट उरुग्वेल गोण, अनुराधाबाट अनुराधा गोण, बिजितबाट विजित गोण, दिर्घायुबाट दिर्घगोण, रोहण बाट रोहण गोण । यसरी श्रीलंकाको प्राचिन राजवंश पनि आमातिरबाट भगवान् बुद्धको शाक्य कुलको भएको भनेर महावंशमा लेखिएको छ ।

**कपिलवस्तुका शाक्यहरुको पतन**

गणतन्त्रवादी प्रजातिहरुको विरुद्धमा कोशल अधिराज्यले गरिरहेको हमला-अभियानमा शाक्यहरु पनि पऱ्यो, बुद्धको जीवनकालमा नै शाक्यहरुलाई आक्रमण गरी यिनीहरुलाई भयानक हमला गरी हत्या गऱ्यो । कोशलका राजा विडुडुभलाई शाक्यहरुले कपिलवस्तुमा दास पुत्र भन्यो भनेर बहाना गरी ७७ हजार कपिलवस्तुका शाक्यहरुको रगत बगाइदियो। अन्य प्रजातिय गणतन्त्रहरुको पनि अन्त गरिदियो। मगधका राजा अजात शत्रु भारतको चक्रबर्ती राजा भयो ।

**उपत्यकामा गुँः विहारको निर्माण**

किरातवंशिय राजा जितेदश्तीको राज्यकालमा कोशलका राजा विडुडभले हमला गरी कपिलवस्तुलाई धवस्त पारी दिए पछि कपिलवस्तुबाट भागेर आएका शाक्यहरु, भिक्षुहरु र स्थानिय वासिन्दाहरु समेत मिली उपत्यकामा निर्माण गरेको सर्वप्रथम गुँ: विहार हो ।

गुँ: विहार भनेको श्रावकयानहरुको विहार हो । यसपछि यहाँ महाँ साँधिक भिक्षुसंघ आइसकेपछि गुँ: विहारबाट कीर्तिपूण्य महाविहार भनेर नामाकरण भयो । फेरि यसको पछि बज्रयानको प्रभाव आएपछि श्री पद्मागिरी धर्मधातू महाविहार भनेर नामाकरण भयो ।

इतिहास शिरोमणि बाबुराम आचार्यको भनाई अनुसार गुँ विहार स्थापना भएपछि नेपालको सभ्यता सुरुवात भएको भनिन्छ ।

## पुष्यमित्र सङ्गले बौद्धहरुको हत्या

अष्ठाध्यायीको महाभाष्यकार महर्षि ‘पतञ्जलिको’ शिष्य ‘पुण्यमित्रसङ्गले’ इ.पु. १८५ मा मोरीय शाक्य कुलका सम्रात ‘वृहरथको’ शासनकालमा सम्रात अशोक पछि व्राम्हणहरुप्रति वैमनस्यको कारणले षडयन्त्र

चलिरहेको थियो । यो वैमनुस्य यति ठूलो भएर गयो कि उग्र रुप धारण गऱ्यो र त्यसको फलस्वरुप मौर्य वंशको सर्वनाश पारिदियो । अन्तिम मौर्य सम्रात वृहरथको पूरोहित महर्षि पतञ्जलि र सेनापति 'पुष्यमित्रसुङ्गले' वृहरथको हत्या गरेर मगधको गद्दी छिनेर लिए । सेनापति पुष्यमित्रसुङ्गले महर्षि पतञ्जलिको आफुलाई आर्शिवाद पाएकोमा अश्वमेघ यज्ञहरुको पुन जीवित गराउने अभियान चलाएका थिए ।

षडयन्त्र सफलता भएपछि नाम (मनु) थियो परन्तु एक जना ब्राम्हण भृगुवंशिय ब्राम्हणले 'पतञ्नलिको' निर्देशनमा भारद्वाज गोत्रिय पुष्यमित्रसुङ्गको तलवार को छायाँमा एक धर्म शास्त्र 'मनुस्मृतिको' प्रतिपादन भयो मनुस्मृतिले राजाको विरुद्ध विद्रोह गर्ने अप्रकृति र पाप भनेर घोषणा गऱ्यो राजा भनेको महादेवता हो । सम्राट वृहरथलाई मरिसकेपछि आफू राजा भई शासन चलाएपछि सेनापति पृष्यमित्रसुङ्गले धेरै संख्यामा बौद्धहरुलाई धमधम दमन गर्दै लग्यो । दमन मात्र होइन धेरैको हत्या पनि गरे । धेरै जस्तो बौद्धहरुलाई समुद्रमा

फ्याँकेर हत्या गरे विभिन्न किसिमबाट सजाय दिन्थे, दीब्याबदान ग्रन्थले दिए अनुसार एक जना भिक्षुको टाउको ल्याउनेलाई १०० दिनार इनाम दिन्थे । यो घोषणा स्याल कोटमा घोषणा गरेको थियो ।

तिब्बतका महान बौद्धिभिक्षु तारानाथले आफ्नो प्रख्यात पुस्तक (हिस्ट्री अफ बुद्धिजम ईन इण्डीयामा) लेखेका छन् कि पुष्यमित्रसुङ्ग बुद्धधर्मको घनघोर दुस्मन थिए । यिनले मध्येदेशदेखि लिएर पंजावको जालंधरसम्म सयौं बौद्ध मठमथान्तरहरुलाई आगो लगाएर खरानी बनाए तथा अनेक विद्वान् र बौद्ध भिक्षुहरुको हत्या गरे ।

तारानाथले यो पनि लेखेका छन् कि 'पुष्यमित्रसुङ्गको अत्याचारले गर्दा अधिकांश बौद्धहरु पाँच बर्षको अन्तरालमा उतर भारतमा वुद्ध धर्म लोप भयो । विभिन्न प्रकारबाट सजाए दिने यस अवस्थाबाट बच्नको लागी बौद्धहरु भागेर आएका र त्यसमध्ये कौसाम्बी, अयोध्या, माथुरा, गान्धार (वर्तमान अफगानिस्तान र पाकिस्तान) बाट आउने धेरै जसो शाक्यहरु काठमाडौं उपत्यकामा आएर पछि नेवार भएर नेपाल मण्डलको विकाशमा योगदान दिई हालसम्म बसिराखेका छन् ।

**लिच्छविकालमा बुद्धधर्म र शाक्यहरुको विकास**

काठमाडौं उपत्यकामा जुनवेला गुँ विहार निर्माण भयो । त्यसबेलादेखि नै बौद्धधर्म विकास भएको थियो । नेपाल मण्डलमा शाक्यहरुले बुद्धधर्म कलाकौशल र साहित्य संस्कृति देखि लिएर बुद्धधर्म विकासको सम्वन्धमा महाविहारदेखि कच्चा विहारहरु हालसम्मा ३४९ ओटा बिहार बनिसकेका छन् । उपत्यकाको बौद्ध विहारमा पंचविद्या देखि अस्टादश शिल्प विद्याको शिक्षा दिने व्यवस्थासम्म भएको सर्वसंघ थिए ।

**पंचबिद्या :**

१) ध्वनि विज्ञान र व्याकरण
२) चिकित्सा विज्ञान (महारत्नकूत सूत्र)
३) कलाकौशल (नेपा बास्तु शिल्प)
४) दर्शन शास्त्र तथा तर्कशास्त्र
५) नक्षत्र विज्ञान तथा पंचाँङ्ग विद्या

**अष्टदशाशिल्प विद्या**

१) नक्षत्र विज्ञान २) गणित विज्ञान

३) चिकित्सा विज्ञान (महारत्नकृत सुत्र)

४) वास्तु शास्त्र स्थापत्यकला (नेपालीहरुले घर बनाउने शास्त्र)

५) शिल्प कर्मस्थान विद्या (धातु विज्ञान अथवा धातु सम्वन्धि शास्त्र)

६) ह्यग्रीभ तन्त्र (खानी पत्ता लगाउने माटोको परिक्षण गरी धातु पत्ता लगाउने)

७) थ्वज्या माज्या शिल्प (आकृति निर्माण शिल्प विभिन्न धातुको भाडा वर्तन इत्यादि बनाउने शिल्प)

८) थँकँमि शिल्प (धातुको मूर्तिदेखि लिएर विभिन्न सामान धाल्ने-शिल्प)

९) मसी शिल्प (च्वलु - सुनको मसी, चाँदीको मसी, तामाको मसी, इत्यादि प्रकारका मसी बनाउने शिल्प)

१०) लुँपा शिल्प (मिस्कत सुनलाई बिसुद्ध गर्ने त्यस्तै चाँदिलाई पनि विसुद्ध गर्ने शिल्प)

११) धुसो शिल्प (धुलोमा सुन चाँदी अथवा अरु विभिन्न धातु छान्ने शिल्प)

१२) कताँ शिल्प (विभिन्न धातु र काठको ढुङ्गाको बुट्टा

काट्ने शिल्प)

१३) चित्रकला (पौभा लेख्ने, विलंपौ लेख्ने, प्राकृतिक विभिन्न रंग वनाउने शिल्प)

१४) चर्या गित, (चर्या नृत्य, पेयता बजाउने म्वाहालि बजाउने, बाँसुरी बजाउने, दवदव वजाउने, कोना बजाउने)

१५) लुँ सिगु शिल्प (विभिन्न मूर्ति र विभिन्न धातुको सामान सुनको मोलम्वा गर्ने शिल्प)

१६) वाद्यवादन कला (धाः बाजा, धिमे वाजा, कोंचाखिं, दाफा इत्यादी कला)

१७) कृषि शिल्प (वापिगु, तरकारी बारी, साः दयेकिगु, स्वाँमा पियेगु, सुरक्षा यायेगु)

१८) दन्त शिल्प (दन्तको विभिन्न जनावरको हड्डी र सिङबाट बनाउने र गैंडाको छाला भैसिं र राँगो को छालाबाट तैनिक गरी सन्दुस बनाउने इत्यादी शिल्प)

**लिच्छवीकालिन समय धेरै नाउँ चलेका सन् ३०० देखि ८८० सम्ममा निर्माण भएको विहार यस प्रकार छन् :**

१) गुँ विहार २) सिङगु विहार ३) मानविहार ४) राज विहार ५) खरजुरी विहार ६) मध्यबिहार
७) शिवदेव विहार ८) मानदेव विहार ९) अभयारुचि विहार १०) कल्याण गुप्त विहार ११) वार्तकल्याण विहार १२) चतुर माल तनासन विहार १३) फुथ्वो विहार १४) देवपाल विहार

## हाँडीगाँउको अंशुवर्माको अभिलेख

लिच्छवी शासानले मान्यता दिइराखेको ५ ओटा विसिष्ट विहार, लिच्छवी राजा अंशुवर्माको अनुदानमा
१) गुँ विहहारलाई विशिष्ट श्रेणीमा राखेको छ। ६ पुराण २ पण भाग छुत्याएको छ। २) श्रीमान विहार ६ पुराण २ पण ३) श्रीराजविहार ६ पुराण २ पण ४) खर्जुरीका विहार ६ पुराण २ पण ५) मध्यमविहार ६ पुराण २ पण। अरु विहारलाई ३ पुराण १ पण।

## लिच्छवी सरकारले विहारलाई अनुदान

नरेन्द्रदेव ताकाको यागवाहाल र बज्रघरका अभिलेखहरुमा त्यसबेलाका !विसिष्ट विहारहरुलाई निम्न

अधिकार सुम्पीदिएको चर्चा गरेको पाइएको छ ।

१) आपनकर (पसलबाट उठाउने कर) रकम
२) अधिकमास तुला दण्ड (आषाढ र पौषमा नाप, तौल, ढक, तराजु आदिको परीक्षण गर्दा तलमाथि परे गरिने दण्ड । )
३) वस्तु भाउबाट उठ्ने रकम (गोठमा पालिएका वस्तु भाउको हेरविचार नपुगि मृत्यु भएमा उठाउने कर)
४) पञ्च अपराधबाट उठ्ने रकम (पञ्च अपराध अन्तर गत अर्काको धन सम्पत्ति चोर्नु र अर्काकी स्वास्नी हेर्नु, ज्यान मार्नेहरुलाई सहयोग वा सम्पर्क गर्नु आदि कुकार्यहरु पर्छन् ।)
५) यस्ता अपराधिहरुको शरिर चाहिं सरकार लाग्ने तथा यिनका सन्तान र घर खेत धन सम्पत्ति भने आर्येसंघले पाउने हुन्थ्यो ।
६) गर्भिणी मृत्यु भएमा गर्भ झिक्न लाग्ने दस्तुरबाट उठ्ने रकम ।

**तिब्बतका राजा "स्रन-चन-गम्पोको" चिनीया**

**महारानीको धाई माँको छोरा (नाई-मुच्च) सिवदेव विहारमा**

७ औं शताब्दीमा तिब्बतका राजा 'सृन-चन-गम्पो'सँग विवाह गर्ने चिनीया राजकुमारी 'वैनचीङ्का' धाई माँको छोरा याङ-पोउ (काठमाडौं उपत्यका) मा बौद्ध धर्म अध्ययन गर्न शिवदेव संस्कारीत रुद्रबर्ण महाविहारमा १३ बर्ष सम्म बसी बौद्ध दर्शन र बौद्ध साहित्य बौद्ध संस्कृति तथा शिल्प समेत अध्ययन गरी तिब्बतको राजधानि ल्हासामा फर्के एक बर्षपछि आफ्नु आमा नभएपछि आफ्नो घर चिनमा फर्केर जानु भयो । चिनीया भिक्षु इचिङ भारतमा बौद्ध धर्म अध्ययन गरी आफ्नो देश चीनमा फर्केका थिए एक जना व्यक्तिले चिनीया राजकुमारी वैन चीङको धाईआमाको छोरा पनी नेपालमा बौद्ध धर्म अध्ययन गरी फर्केका छन् भनि चिनीयाभिक्षु इचिङलाई सुनायो । ईचिङ त्यो मान्छे कहाँ बसेको छ भनेर सोधे मैले भेटाई दिन्छु भनेर लगे भेटदाखेरी ई-चिङले धेरै कुरा सोधनु भयो । जवाफमा नेपालको शिवदेव विहारको व्यवस्थाबारे महारानी वैन-चीङको धाई माँको छोराले बताएको विवरण छ ।

म त्यो विहारमा हुँदाखेरी ४०० जति भिक्षुहरु बौद्ध धर्म अध्ययन गरी बसेका छन् । उनीहरु संस्कृतबाट पुस्तक लेख्छन्, उनीहरुको भोजन व्यवस्था पनि धेरै राम्रो छ । बौद्ध धर्मको दर्शन, बौद्ध साहित्य, बौद्ध संस्कृति कला विभिन्न प्रकारको शिल्प (अष्टादश शिल्पविद्या) पनि सिकाइन्छ ।

**सन्दर्भ पुस्तक**

चिनीया भिक्षु इ-चीङले लेखेको पुस्तकबाट DEOUARD CHAVANES ले अनुवाद गरेको

- थाङ वंशको समय पश्चिम देशको अध्ययन सन् १८९४ मा पेरिसबाट प्रकाशित गरेको
- थाङ वंशको इतिहास (हान भाषको)
- ल्वोङ-क्षन-क्षो-जुन (तिब्बतको धार्मिक इतिहास)
- सिल्भाँ लेभिले लेखेको नेपाल हिन्दूराज्यको इतिहास दोस्रो खण्ड ।

## लिच्छवीकालीन आभिरगुप्त अनुपरमको शिलापत्र

आभिरगुप्त अनुपरमले महर्षि द्वैपायन (वेदव्यास) को स्तुतिगरि अभिलेखमा विपक्षिहरुको मतको खण्डन गरेको छ ।

१) वेदको प्रमाणिकतालाई नमान्ने ।

२) यज्ञयागाडी कर्मकाण्डको विरोध गर्ने ।

३) आत्मा नै छैन भनी प्रचार गर्ने (अनात्मावादीहरु र अइश्वरवादीहरु)

४) नास्तिक

५) कुतार्किक

६) मुर्ख

७) कुमती आदि शब्दको प्रयोग गरी बौद्धहरुको निन्दा गरेका छन् ।

## शङ्कराचार्य नेपाल आगमन

ने.सं. २६२ (इ.सं. ११०२) हाल नेपाल संग्राहलय छाउनीमा रहेको अभिलेख ।

द्वेवबादी थिए योग र तान्त्रिक पद्धतिको अनुशरण गर्ने शङ्कराचार्य नेपालमा २ पटक आएका थिए ।

शैवमतको निकै प्रचार गरे, शास्त्रार्थ गरे । थुप्रै भक्तहरुलाई दीक्षा दिने काम भयो । राजा शिवदेवको छोरा आनन्ददेव र अरु राजकुमारहरुलाई पनि उनले दिक्षादिएको थियो । नेपालको राजघरानामा पनि गुरु बन्न पुग्यो । पशुपतिनाथको मन्दिरको जीर्णोधार शङ्काचार्यले गराएथैं । तान्त्रिक पद्धतिको पनि प्रश्रय त्यसबेलादेखि पाउन थाले को हो । राजा शिवदेवको पालादेखि तान्त्रिक प्रभाव ने पालमा बढेको कुरामा शंका छैन ।

**बौद्ध नेवारहरुलाई शंङ्कराचार्यले हिन्दूकरण**

बौद्ध नेवारहरुको समाजमा अकस्मात एक क्रूर विरोधी देखा पऱ्यो र समाजमा झगडा सुरु गरिदियो । द्वन्द्वले बौद्धहरुको विजय भयो भने व्राम्हणहरुको आफ्नो अस्तित्वमा नै खतरा हुन लागेको देखेर नेपालका व्राम्हण पूरोहितहरु चालाकी साथ स्थानिय बौद्धहरुको धार्मिक गतिविधिमा विस्तारै भित्र घुसे उनीहरुले बौद्ध देवताहरुलाई पनि आफ्नै बनाई विस्तारै आफ्ना देवताहरुलाई पनि प्रचलित संस्कार भित्र स्थापित गर्दै हिन्दुकरण गर्दै

लग्यो र व्राम्हणहरुको विस्तारै विजय हुँदै गयो । यसरी बौद्धमार्गीहरुको प्रत्येक वर्ग पनि बिस्तारै व्राम्हण धर्मको फोड्न नसक्ने पर्खालको घेराभित्र वन्द भएर रहन थाले ।

हालसम्म पनि विदेशीहरुले को बौद्ध , को हिन्दू छुटाउन सेकेका छैनन् ।

**भारतबाट नेपालमा बज्रयानीहरुको प्रवेश**

१२ औं शताब्दीमा गोविन्दपालको शासनकालमा मोह्म्मदविन बख्तियार खिजलीहरुले मगधमा हमला गर्न तयार भइरहेको समयमा मगधमा हिन्दूहरुको गोप्य संगठनको नेता देवाकर व्राम्हणलाई भेट्न मोहम्मदविन बख्तियार खिजलीहरुले एक जना गुप्तचर मिरलाई मगधमा पठाए । पालवंशको शासनको गतिविधि बुझ्न मिरले मगध देवाकर ब्राम्हणलाई भेटेथे । मिरले देवाकर व्राम्हणलाई अहिले मगधको पालवंशको शासनमा सैनिक व्यवस्था कस्तो छ ? भनेर सोधे । त्यसको जवाफमा देवाकर व्राम्हणले "मेरो एउटा शर्त छ, त्यो के भने तपाईहरुले नालण्दा विश्वविद्यालयलाई ध्वस्त पार्नु पर्छ । यो शर्तलाई मानेको खण्डमा मैले पालवंशको

गतिविधि बताउने छु" भनेर भन्नु भयो । मिरले त्यसो भए हाम्रो सरदारलाई भनौंला भनेर फर्केर गए । फेरी फर्केर आएपछि मिरले सरदारलाई भने देवाकर व्राम्हणले नालण्दा विश्वविद्यालय ध्वस्त पार्नु पर्ने शर्त राखेको छ। हामीले के भन्ने भन्दा खेरी सरदारले स्वीकार गरेको छ। मगढमा गएर मिरले देवाकर व्राम्हणलाई सोध्नुभयो तपाईले मगधको पालशासनको गतिविसध भन्नुपर्‍यो भन्दा खेरी देवाकर व्राम्हणले सबै कुरा बताउनु भयो । मगधको शासनमा रक्षा कोस नै छैन सम्राट गोविन्दपालले तान्त्रिक आचार्य सिद्धहरुको विश्वासमा शासन चलाइरहेका थिए । तपाईहरुले हम्ला गरेको खण्डमा तान्त्रिक आचार्य सिद्धहरुबाट उनीहरुको तन्त्र मन्त्रबाट केहि पनि गर्न सक्दैन । तपाईहरु निश्चय विजय हुन्छ, यो सत्य कुरा हो ।

देवाकार व्राम्हणले भनेको कुरा सबै सरदार लाई बताउनु भयो । त्यसपछि बख्तियार खिजलीहरुले मगधमा हमला सुरु गर्‍यो । त्यस समयमा बौद्धहरुको नेता मानिएका व्यक्तिहरुमध्ये बज्रयानी महापण्डित ज्ञानभद्र र

शाक्यश्रीभद्र र सिद्ध नारोपा भिक्षुनी देव पाली (मणिभद्र), भिक्षु कनकश्री (युवाभिक्षु) भिक्षु र भिक्षुनीहरुले पनि पहाडबाट मान्छे ल्याई सैनिक संगठन गरी केही समयसम्म मुकावला गरेपछि वख्तियार खिजलीहरुको अगाडि केही लागेन । उनीहरु पनि भागे । मगधलाई मुसलमान सैनिकहरुले ध्वस्त पारिदियो । नालण्दा विश्वविद्यालयलाई पनि ध्वस्त पारिदियो । शाक्य श्रीभद्र नेपालमा भागेर आए । अरुहरु पनि नेपालमा नै भागेर आए । शरणार्थीको रुपमा नेपालको विहार विहारमा बसेर बज्रयानी बौद्ध धर्म प्रचार गरी जीवन बिताए । नेपालका राजा अभय मल्ल समकालिन ग्रन्थ पञ्चरक्षा भक्तपुर संग्राहालय संग्रहित ग्रन्थ अनुसार सन् १२१६ सालसम्म नेपालमा भुकम्पबाट कति नोक्सान भयो भनेर तथ्यांक लिंदा खेरी भारतबाट भागेर आएका शरणार्थीहरु नेपालको विहार-विहारमा १/३ प्रतिशत भएको तथ्यांक छ । बज्रयानी पण्डितहरुको संख्यामा धेरै नै थियो भनिन्छ ।

## उपत्यकामा जयस्थिति मल्लको हिन्दूकरण

भारतका मुसलमानको विजय र बचेखुचेका आखिरी

ब्राम्हण धर्मका राज्यहरुको पतनले गर्दा पहिलेका धार्मिक विद्वानहरुले धैर्यपूर्वक संगठन गर्न ल्याएको संघ-संस्थाहरुको विनाश हुने खतरा भएको थियो । उक्त संगठनबाट बच्न र पहिले देखिका पूजाआजा र धार्मिक स्थितिलाई स्थायित्व दिन दरबारमा कानूनचीहरु भेला गरी मौखिक र लिखित प्रचलित नियम कानून बटुलेर तत्कालिन समयमा उनले भारतबाट पाँच जना विद्वान ब्राम्हणहरु ल्याएका थिए ।

१) कीर्तिनाथ उपाध्याय (कानिकुञ्ज)
२) रघुनाथ झा (मैथली)
३) श्री नाथ भट्ट
४) महिनार भट्ट
५) रामनाथ झा

बोलाएर/शास्त्रहरु खोजेर यिनीहरु जाति जातपात घर बार खेतीपाती मृत्यु संस्कार आदि विषयका नियम कानून संकलन गरी शास्त्र तयार गरे । यस्ता नियमहरु पहिले भएता पनि प्रयोगमा नआएकाले हराई सकेको थिए भनी इतिहासकारहरु भन्दछन् ।

नेपाल सम्बत् ५१५ मा जयस्थिति मल्ले मनुस्मृतिको आधारमा ४ वर्ण ६४ जात ७२५ उपजात बनाउनु भयो ।

१) शैवतन्त्र

२) शाक्तसम्प्रदाय

३) नाथपंथि सम्प्रदाय

४) बज्रयानी सम्प्रदाय समेत चार सम्प्रदायका संस्कार मिलाई नेवार संस्कार पद्धति बनाई सामाजिक नीति अपनाइएको छ ।

राजा जयस्थिति मल्लले बनाएको नेवार संस्कार पद्धतिलाई पुरोहितद्वारा लागू गर्नु पर्ने छ । केही भएर लागु गर्न नसकेमा पुरोहितहरुलाई दण्ड गर्ने छ । दण्ड यस प्रकार छन् ।

| | | |
|---|---|---|
| १) | राजोपाध्यायलाई | १००० |
| २) | बज्राचार्यलाई | ५०० |
| ३) | कर्माचार्यलाई | ५०० |

जयस्थिति मल्लले बनाएको संस्कार पद्धति ६०० वर्ष भैसके पनि नेवार समाजमा हालसम्म यो लागू नै भइरहेका छन् । आजभोलि यस पद्धतिलाई हिन्दू र बौद्धहरुको समन्वय भनिन्छ ।

अस्तु,

भबतुसब्बमङ्गलम्

लेखक




## हर्षमुनि शाक्य

थकाली किफगुठी

कीर्तिपुण्य महाविहार

लगन बहाल, काठमाडौं

वडा नं. २१